# ➔अन्तःशुल्क ऐन, २०५८

लालमोहर र प्रकाशन मिति
२०५८।१०।१७

संशोधन गर्ने ऐन

१. आार्थिक ऐन,२०६६ २०६६।४।१

२०५८ सालको ऐन नं. १७

**अन्तःशुल्क सम्बन्धी कानूनलाई संशोधन र एकीकरण गर्न बनेको ऐन**

**प्रस्तावना** : मुलुकको आर्थिक विकासको लागि आवश्यक राजश्व संकलन गर्ने प्रक्रियालाई प्रभावकारी बनाई राजश्व परिचालन बढाउन नेपाल अधिराज्यमा उत्पादन भएका वा पैठारी हुने वस्तु वा प्रदान गरिने सेवामा अन्तःशुल्क लगाउने र असुल उपर गर्ने सम्बन्धमा व्यवस्था भएका कानूनलाई समयानुकूल बनाई संशोधन र एकीकरण गर्न वान्छनीय भएकोले,

श्री ५ महाराजाधिराज ज्ञानेन्द्र वीर विक्रम शाहदेवको शासनकालको पहिलो वर्षमा संसदले यो ऐन बनाएको छ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम "अन्तःशुल्क ऐन, २०५८" रहेको छ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "अन्तःशुल्क लाग्ने वस्तु वा सेवा" भन्नाले यस ऐन वा अन्य प्रचलित कानून बमोजिम अन्तःशुल्क लाग्ने वस्तु वा सेवा सम्झनु पर्छ ।

(ख) "वस्तु" भन्नाले चल वा अचल दुबै किसिमको सम्पत्ति सम्झनु पर्छ ।

(ग) "सेवा" भन्नाले वस्तु बाहेकको जुनसुकै कुरा सम्झनु पर्छ ।

(घ) "प्रतिष्ठान" भन्नाले अन्तःशुल्क लाग्ने वस्तु उत्पादन, पैठारी, संचय वा बिक्री वितरण गर्ने वा अन्तःशुल्क लाग्ने सेवा प्रदान गर्ने उद्देश्यले प्रचलित कानून बमोजिम स्थापना भएका फर्म, कम्पनी वा संस्था सम्झनु पर्छ ।

(ङ) "इजाजतपत्र" भन्नाले दफा ९ बमोजिम दिइएको इजाजतपत्र सम्झनु पर्छ ।

(च) "अन्तःशुल्क अधिकृत" भन्नाले यस ऐनको प्रयोजनको निमित्त नेपाल सरकारले तोकेको अधिकृत सम्झनु पर्छ ।

➔ यो ऐन प्रत्येक वर्षको आार्थिक ऐनबाट संशोधन हुने गरेको छ । आर्थिक ऐन, २०६६ बमोजिम यो ऐनलाई परिमार्जन गरिएको छ । यसमा कुनै त्रुटी देख्नु भएमा नेपाल कानून आयोगमा सूचना गरिदिनुहुन अनुरोध छ ।

♣(छ) "उत्पादन" भन्नाले अन्तःशुल्क लाग्ने वस्तु निर्माण गर्ने, बनाउने वा तयार गर्ने कार्य सम्झनु पर्छ ।"

(ज) "उत्पादक" भन्नाले अन्तःशुल्क लाग्ने वस्तु उत्पादन गर्न इजाजतपत्र प्राप्त गरेको व्यक्ति, फर्म, कम्पनी वा संस्था सम्झनु पर्छ र सो शब्दले अन्तःशुल्क लाग्ने सेवा प्रदान गर्ने व्यक्ति, फर्म, कम्पनी वा संस्था समेतलाई जनाउनेछ ।

™(ज१) "सूर्तिजन्य वस्तु" भन्नाले सूर्ति वा सूर्तिजन्य पदार्थका तत्वहरू मिश्रित धुम्रपान, चपाउने, मुखमा राख्ने पानपराग, खैनी वा यस्तै पदार्थहरू सम्झनु पर्छ र सो शब्दले चुरोट, बिडी, सिगार आदिलाई समेत जनाउँछ ।"

(झ) "व्यक्ति" भन्नाले कुनै व्यक्ति, प्रतिष्ठान, संघ, साझेदारी संस्था, सहकारी, संयुक्त व्यवसाय, गुठी वा कोषको संचालक, प्रोप्राइटर र मुख्य भै काम गर्ने प्रतिनिधि वा एजेण्ट सम्झनु पर्छ र सो शब्दले नाफाको उद्देश्य लिई वा नलिई अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको उत्पादन वा पैठारी गरी थोक वा खुद्रा वा जुनसुकै रुपमा बिक्री वितरण गर्ने निकाय वा त्यस्तो निकायको शाखा, उपशाखा वा त्यस्तै अन्य कारोबार गर्ने स्थान समेतलाई जनाउनेछ ।

♣(ञ) "कारखाना मूल्य" भन्नाले अन्तःशुल्क लाग्ने वस्तुमा अन्तःशुल्क वा अन्य कुनै कर नजोडी त्यस्तो वस्तु उत्पादन गर्न लाग्ने खर्च र प्रतिष्ठानको नाफा मात्र जोडी निर्धारण भएको मूल्य सम्झनु पर्छ ।"

(ट) "मूल्य" भन्नाले,-

(१) उत्पादन गर्ने वस्तुको हकमा कारखाना मूल्य,

(२) सेवाको हकमा बिजक बमोजिमको मूल्य,

♣(३) पैठारी हुने वस्तुको हकमा दफा (७) को उपदफा (२) बमोजिम निर्धारण भएको मूल्य ।

(ठ) "पैठारी" भन्नाले अन्तःशुल्क लाग्ने वस्तु प्रचलित कानून बमोजिम विदेशबाट नेपाल अधिराज्यभित्र ल्याउने कार्य सम्झनु पर्छ ।

---

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(ड) “बिजक” भन्नाले यस ऐन बमोजिम मूल्य उल्लेख गरी दिइने बिल, रसीद पूर्जी वा भर्पाई सम्झनु पर्छ ।

(ढ) “विभाग” भन्नाले यस ऐनको प्रयोजनको निमित्त नेपाल सरकारले तोकेको विभाग सम्झनु पर्छ ।

(ण) “महानिर्देशक” भन्नाले विभागको महानिर्देशक सम्झनु पर्छ ।

™(ण१) “मदिरा” भन्नाले अन्न फलफूल वा अन्य कुनै स्टार्चयुक्त वस्तुलाई जीव रासायनिक प्रक्रियाद्वारा कुहाई वा अन्य कुनै तरिकाबाट तयार पारिएको शून्य दशमलव पाँच प्रतिशत भन्दा वढी अल्कोहल भएको पदार्थ सम्झनु पर्छ र सो शब्दले रक्सी, जाँड, छ्याङ, ह्वीस्की, रम, जीन, ब्राण्डी, भोड्का, बियर, वाइन, सेरी, साइडर, पेरी, मिड, माल्ट, औद्योगिक अल्कोहल, रेक्टिफाइड स्प्रिट, माल्ट स्प्रिट, ई.एन.ए. र हेड्स स्प्रिट समेतलाई जनाउँछ ।

™(ण२) “तयारी मदिरा” भन्नाले आयतनमा सन्ताउन्न दशमलव शून्य छ प्रतिशत भन्दा कम अल्कोहलको मिश्रणबाट बनेका सबै प्रकारका मादक द्रवहरूलाई जनाउँछ ।

™(ण३) “एल.पी” भन्नाले लण्डन प्रुफमा शुद्ध ईथानोलको शक्तिलाई जनाउँछ ।

™(ण४) “एल.पी लिटर” भन्नाले प्रति लिटरमा सन्ताउन्न दशमलव शून्य छ प्रतिशत शुद्ध ईथानोलको मात्रालाई जनाउँछ ।

™(ण५) “यू.पी.” भन्नाले लण्डन प्रुफ भन्दा कम शक्तिलाई जनाउँछ ।

™(ण६) “ओ.पी.” भन्नाले लण्डन प्रुफ भन्दा वढी शक्तिलाई जनाउँछ ।”

™(ण७) “भौतिक नियन्त्रण प्रणाली” भन्नाले अन्तःशुल्क अधिकृत वा निजले तोकेको कर्मचारीको नियन्त्रणमा अन्तःशुल्क लाग्ने वस्तुको उत्पादन, निष्कासन, पैठारी तथा निकासी गरिने प्रणालीलाई जनाउँछ ।

™(ण८) “स्वयम् निष्कासन प्रणाली” भन्नाले भौतिक नियन्त्रण प्रणालीमा आधारित बाहेकका अन्तःशुल्क लाग्ने अन्य वस्तु वा सेवाको उत्पादन, निष्कासन, पैठारी तथा निकासी गरिने प्रणालीलाई जनाउँछ ।

™(ण९) “अन्तःशुल्क निर्धारण” भन्नाले यस ऐन बमोजिम गरिने अन्तःशुल्क निर्धारणलाई जनाउँछ ।

(त) “तोकिएको” वा “तोकिए बमोजिम” भन्नाले यस ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिम सम्झनु पर्छ ।

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

♣३. **अन्तःशुल्क लाग्ने** : अन्तःशुल्क लाग्ने वस्तु तथा सेवा प्रतिष्ठानबाट उत्पादन गरी निष्कासन गर्दा, पैठारी गर्दा र सेवा बिक्री गर्दा अनुसूचीमा उल्लेख भए बमोजिमको अन्तःशुल्क लाग्नेछ ।

™३क. **अन्तःशुल्क निर्धारण र असुली** : (१) यस ऐन बमोजिम लाग्ने अन्तःशुल्कको निर्धारण र असुल गर्ने दायित्व अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको उत्पादन गर्ने उत्पादकको हुनेछ ।

तर पैठारी हुने वस्तुको अन्तःशुल्कको निर्धारण असुली सम्बन्धित भंसार कार्यालयले गर्नेछ ।

(२) कुनै वस्तुको उत्पादन वा पैठारीका अतिरिक्त बिक्री वितरणको तहमा समेत अन्तःशुल्क लाग्ने भएमा यस ऐन बमोजिम लाग्ने अन्तःशुल्कको निर्धारण र असुली गर्ने दायित्व पैठारीकर्ता वा विक्रेताको हुनेछ ।

(३) अन्तःशुल्क लाग्ने वस्तु उत्पादन गर्दा खपत भएको कच्चा पदार्थमा तिरेको अन्तःशुल्क तयारी वस्तु निष्कासन गर्दा तिर्नु पर्ने अन्तःशुल्कमा कट्टा गर्न पाइनेछ ।

तर स्वयं निष्काशन प्रणाली लागू हुने उद्योगले कच्चा पदार्थ खरिद वा आयात गर्दा तिरेको अन्तःशुल्क तयारी वस्तु बिक्री गर्दा तिर्नु पर्ने अन्तःशुल्कमा कट्टा गर्न पाइनेछ ।

(४) व्यापारिक प्रयोजनका लागि अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको खरिदमा वा पैठारीमा तिरेको अन्तःशुल्क त्यस्तो वस्तु वा सेवा बिक्री गर्दा तिर्नुपर्ने अन्तःशुल्कमा कट्टा गर्न पाइनेछ ।

(५) आगजनी, चोरी, दुर्घटना, ध्वंसात्मक गतिविधि वा वस्तुको उपयोगको म्याद सकिएको कारणले हानी नोक्सानी भएको वस्तुमा तिरेको अन्तःशु:ल्क विभागले तोके बमोजिम कट्टी गर्न पाइनेछ ।

™३ख. **अन्तःशुल्क नलाग्ने** : (१) दफा ३ बमोजिम अन्तःशुल्क लाग्ने वस्तु वा सेवामा देहायको अवस्थामा अन्तःशुल्क लाग्ने छैन :–

(क) नेपाल वाहिर निकासी गरेमा वा स्वीकृति प्राप्त करमुक्त पसल (वण्डेड वेयर हाउस र ड्युटी फ्री सप) लाई मदिरा र चुरोट बाहेकका अन्य वस्तु बिक्री गरेमा त्यस्तो वस्तु वा सेवामा अन्तःशुल्क लाग्ने छैन ।

(ख) स्वीकृति प्राप्त वण्डेड वेयर हाउसले नेपाल सरकार, परराष्ट्र मन्त्रालयले सिफारिस गरेको कुटनैतिक तथा महसुल सुविधा प्राप्त व्यक्ति वा निकायलाई बिक्री गर्ने चुरोट तथा मदिरामा अन्तःशुल्क लाग्ने छैन ।

तर,

---

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(१) वण्डेड वयेर हाउसले चुरोट तथा मदिरा बाहेकका अन्य वस्तु अन्तःशुल्क नलगाई बिक्री वितरण गर्न बाधा पर्ने छैन ।

(२) बण्डेड वयेर हाउसबाट बिक्री गरिने अन्तःशुल्क लाग्ने वस्तु पैठारी गर्दा त्यस्तो वस्तुमा लाग्ने अन्तःशुल्क बराबरको रकम नगद धरौटी वा बैंक प्रत्याभूति राख्नु पर्नेछ ।

(२) उपदफा (१) को खण्ड (क) र (ख) बमोजिमको नगद धरौटी वा बैंक प्रत्याभूतिको फुकुवा वा फिर्ता प्रक्रिया विभागद्वारा तोकिए बमोजिम हुनेछ ।

(३) नेपालभित्र उत्पादन भएका वा तयार भएका मालवस्तुहरू नेपालबाहिर निर्यात भैसकेपछि सम्बन्धित पार्टीले लिन अस्वीकार गरी वा अन्य कुनै कारणले पुनः पैठारी गरी ल्याएको अवस्थामा सोही मालवस्तु पैठारी भएको तीन महिनाभित्र निकासी गर्ने भएमा यसरी फिर्ता ल्याउँदाका बखत लाग्ने अन्तःशुल्क धरौटीमा राखी त्यस्तो मालवस्तु पुनः निकासी भएपछि धरौटी रकम सम्बन्धित भन्सार कार्यालयले फिर्ता दिनेछ ।

♣४. **अन्तःशुल्क असुली:** (१) यस ऐनमा अन्यथा व्यवस्था गरिएकोमा बाहेक यस ऐन बमोजिम अन्तःशुल्क लाग्ने वस्तु तथा सेवामा देहाय बमोजिम अन्तःशुल्क असुल गरिनेछः–

(क) भौतिक नियन्त्रण प्रणाली लागू हुने उद्योगले उत्पादन गर्ने वस्तुको हकमा प्रतिष्ठानबाट उत्पादन गरी बिक्रीका लागि निष्कासन गर्दाको बखत,

(ख) स्वयम् निष्कासन प्रणालीमा आधारित वस्तु तथा सेवाको हकमा बीजक जारी गर्दाको बखत,

(ग) पैठारी हुने वस्तुको हकमा त्यस्तो वस्तु नेपालभित्र प्रवेश गर्दाको बखत भन्सार विन्दुमा,

(घ) पैठारी हुने सेवाको हकमा विभागद्वारा तोकिए बमोजिम ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै वस्तु वा सेवाको हकमा त्यस्तो वस्तु उत्पादन गरेको वा सेवा प्रदान गरेको अवस्थामा नै अन्तःशुल्क असुल गर्नुपर्ने गरी विभागले तोक्न सक्नेछ ।"

™४क. **अन्तःशुल्क बुझाउने दायित्व** : यस ऐन बमोजिम अन्तःशुल्क बुझाउने दायित्व देहाय बमोजिमको व्यक्तिमा हुनेछः–

---

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(क) नेपालभित्र उत्पादन हुने वस्तु वा सेवाको हकमा उत्पादक,

(ख) पैठारी हुने वस्तुमा सो वस्तु प्राप्त गर्ने विल अफ लेडिङ्ग वा एरोबिल (एअरबिल) मा उल्लेख भएका व्यक्ति,

(ग) अन्तःशुल्क लाग्ने पदार्थ लिलाम भएकोमा सो लिलाम सकार्ने व्यक्ति,

(घ) कर मुक्त पसल (ड्यूटी फ्रि सप) बाट बिक्री भएको मदिरा र चुरोट बाहेकका वस्तु पुनःबिक्री वा अन्य प्रयोजनमा प्रयोग भएमा पुनः बिक्री गर्ने वा प्रयोग गर्ने व्यक्ति,

(ङ) कुनै वस्तु वा सेवा अन्तःशुल्क नलाग्ने अवस्थाबाट लाग्ने अवस्थामा परिवर्तन भएमा त्यस्तो वस्तुको स्वामित्व कायम रहने व्यक्ति,

(च) खण्ड (क) देखि (ङ) मा उल्लेख भएदेखि बाहेक अन्य अवस्थामा विभागले तोकेको व्यक्ति ।

™४ख. अन्तःशुल्क दाखिला गर्ने म्याद : (१) यस ऐन बमोजिम असुल भएको अन्तःशुल्क देहाय बमोजिम दाखिला गर्नुपर्नेछः–

(क) भौतिक नियन्त्रण प्रणालीमा आधारित वस्तुको हकमा त्यस्तो वस्तु निष्कासन गर्दाका बखत,

(ख) स्वयं निष्कासन प्रणाली अन्तर्गत उत्पादन तथा बिक्री वितरण हुने वस्तु वा सेवाको हकमा बिजक जारी भएपछिको महिनाको पच्चीस गतेभित्र,

(ग) पैठारी हुने वस्तुको हकमा त्यस्तो वस्तु नेपालभित्र प्रवेश गर्दाका बखत,

(घ) पैठारी हुने सेवाका हकमा विभागले तोके बमोजिम ।

(२) उपदफा (१) को खण्ड (ख) बमोजिमको म्यादभित्र अन्तःशुल्क भुक्तानी नगरेमा भुक्तानी गर्न बाकी अन्तःशुल्क रकममा प्रति दिन शून्य दशमलव शून्य पाँच प्रतिशतका दरले विलम्ब शुल्क लाग्नेछ ।

™४ग. अन्तःशुल्क छुट हुने : (१) कुटनैतिक सुविधा प्राप्त व्यक्ति वा निकायले परराष्ट्र मन्त्रालयको सिफारिसमा पैठारी गर्ने वस्तुमा अन्तःशुल्क छुट हुनेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि देहायको अवस्थामा समेत अन्तःशुल्क छुट हुनेछ :-

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(क) विदेशी नियोग तथा दातृ संस्थाले कुटनैतिक सुविधा वा महसुल सुविधामा पैठारी गरेका सवारी साधन कुनै आयोजनाको स्वीकृत वार्षिक कार्यक्रम अनुरुप आयोजनालाई नै हस्तान्तरण गरी सरकारी नम्बर प्लेटमा परिवर्तन गर्दा वा कुनै आयोजनाको नाममा पूर्ण वा आंशिक महसुल सुविधामा (लगत वा बैंक ग्यारेण्टीमा पैठारी भएको बाहेक) पैठारी भएका सवारी साधन आयोजना समाप्ति पछि अर्थ मन्त्रालयको स्वीकृति लिई स्थानीय निकाय, सामुदायिक विद्यालय, सामुदायिक अस्पताल वा सरकारी निकायलाई हस्तान्तरण गर्दा,

(ख) कुटनैतिक नियोग, परियोजना र अन्य निकायहरू (सरकारी एवम् गैरसरकारी संघ संस्था) ले महसुल सुविधामा पैठारी गरेका शुरु उत्पादन वर्षले १५ वर्ष नाघेका पुराना सवारी साधन अर्थ मन्त्रालयको स्वीकृति लिई पुनः प्रयोग हुन नसक्ने गरी स्क्रयाप गरी रजिष्ट्रेशन रद्द गर्न चाहेमा त्यस्तो सवारी साधनमा,

(ग) निजी प्रयोजनको लागि आंशिक भन्सार महसुल सुविधामा आयात गरिएका सवारी साधनका धनीको मुत्यु भै उक्त सवारी साधनलाई निजको पति वा पत्नीको नाममा नामसारी गर्दा ।

(३) नब्बे प्रतिशत वा सो भन्दा बढी स्वदेशी झुत्रा वा पत्रु (कवाडी) वस्तु प्रयोग गरी उत्पादन गर्ने उद्योगलाई त्यस्तो उत्पादनमा लाग्ने अन्तःशुल्क छुट हुनेछ ।

™४घ. बिक्री वितरणमा नियन्त्रणः नेपाल सरकारले आवश्यक ठानेको अन्तःशुल्कजन्य वस्तुको बिक्री वितरणमा नियन्त्रण गरी तोकिए बमोजिम व्यवस्थित गर्न सक्नेछ ।

५. **अन्तःशुल्क अधिकृत नियुक्त गर्न वा तोक्न सक्ने** : यस ऐनको प्रयोजनको निमित्त नेपाल सरकारले आवश्यक संख्यामा अन्तःशुल्क अधिकृत नियुक्त गर्न सक्नेछ र नेपाल सरकारले आवश्यक देखेमा नेपाल सरकारको अन्य कुनै अधिकृतलाई पनि अन्तःशुल्क अधिकृतको कार्य गर्ने गरी तोक्न सक्नेछ ।

६. **अन्तःशुल्क अधिकृतको अधिकारक्षेत्र** : अन्तःशुल्क अधिकृतको अधिकारक्षेत्र नेपाल सरकारले तोके बमोजिम हुनेछ ।

♣७. **अन्तःशुल्क लाग्ने वस्तु तथा सेवाको मूल्य निर्धारण** : (१) नेपालभित्र उत्पादन हुने कुनै वस्तु वा सेवामा मूल्यको आधारमा अन्तःशुल्क लाग्ने भएमा देहाय बमोजिमको मूल्यलाई आधार मानी अन्तःशुल्क लगाइनेछ :-

---

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(क) उत्पादकले अन्तःशुल्क लाग्ने वस्तु बिक्री गर्दा निर्धारण गरेको कारखाना मूल्य, वा

(ख) सेवाको हकमा सेवा बिक्री गर्दाको मूल्य, वा

(ग) विभागले उत्पादन लागत वा अन्य उपयुक्त आधारमा तोकी दिएको मूल्य ।

(२) नेपालभित्र पैठारी हुने वस्तुको सम्बन्धमा त्यस्तो वस्तुमा भन्सार महसुल लिने प्रयोजनको निमित्त निर्धारण गरिएको मूल्यमा भन्सार महसुल समेत थप गरी कायम हुन आएको मूल्यमा अन्तःशुल्क लगाइनेछ ।

(३) सेवामा बीजक बमोजिम मूल्य निर्धारण गरी अन्तःशुल्क असूल उपर गरिनेछ ।

(४) अन्तःशुल्क अधिकृतले अन्तःशुल्क असूल उपर गर्ने प्रयोजनको निमित्त आवश्यकतानुसार पुनः मूल्य निर्धारण वा अतिरिक्त मूल्य निर्धारण गर्न सक्नेछ ।

८. **इजाजतपत्र लिनु पर्ने** : (१) यस ऐन बमोजिम इजाजतपत्र नलिई कसैले पनि अन्तःशुल्क लाग्ने वस्तु उत्पादन, पैठारी, बिक्री वा संचय गर्न वा अन्तःशुल्क लाग्ने सेवा कसैलाई प्रदान गर्न हुँदैन ।

(२) उपदफा (१) बमोजिमको इजाजतपत्र लिन चाहने व्यक्ति, फर्म, कम्पनी वा संस्थाले तोकिए बमोजिमको ढाँचामा तोकिएको दस्तूर संलग्न गरी अन्तःशुल्क अधिकृत समक्ष इजाजतपत्रको लागि निवेदन दिनु पर्नेछ ।

९. **इजाजतपत्र सम्बन्धी व्यवस्था** : (१) यस ऐन वा यस ऐन अन्तर्गत बनेको नियम बमोजिम इजाजतपत्र नलिई कसैले पनि अन्तःशुल्क लाग्ने वस्तु उत्पादन, पैठारी, बिक्री वा संचय गर्न वा अन्तःशुल्क लाग्ने सेवा कसैलाई प्रदान गर्न हुदैन ।

तर ईटा, स्टोन क्रसर, बिंडी, सुर्ती, खैनी, पान मसला, गुट्खा उत्पादन, खाँडसारी उद्योग तथा खुदो र गुँड पैठारीमा बाहेक स्वयं निष्काशन प्रणाली लागू हुने उद्योग अन्तर्गत अन्तःशुल्क लाग्ने वस्तुको उत्पादन, पैठारी, बिक्री वा संचय गर्न वा अन्तःशुल्क लाग्ने सेवा प्रदान गर्न र परराष्ट्र मन्त्रालयको सिफारिसमा कुटनैतिक सुविधा अन्तर्गत अन्तःशुल्क लाग्ने वस्तुको पैठारी गर्दा अन्तःशुल्क इजाजतपत्र लिनु पर्ने छैन ।

(२) उपदफा (१) बमोजिमको इजाजतपत्र लिन चाहने व्यक्ति, फर्म कम्पनी वा संस्थाले तोकिए बमोजिमको ढाँचामा तोकिएको दस्तूर संलग्न गरी अन्तःशुल्क अधिकृत समक्ष इजाजतपत्रको लागि निवेदन दिनु पर्नेछ ।

* आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।

(३) उपदफा (२) बमोजिम अन्तःशुल्क अधिकृत समक्ष इजाजतपत्रको लागि निवेदन परेमा त्यस्तो निवेदन उपर आवश्यक जाँचबुझ गरी उपयुक्त देखिएमा तोकिए बमोजिमको ढाँचामा विभाग वा विभागले तोकेको अन्तःशुल्क अधिकृतले इजाजतपत्र दिनु पर्नेछ ।

(४) उपदफा (३) बमोजिम दिइएको इजाजतपत्रको अवधि एक आर्थिक वर्षसम्म कायम रहनेछ ।

(५) इजाजतपत्र नवीकरण गराउन चाहने इजाजतपत्रवालाले उपदफा (४) बमोजिमको अवधि समाप्त भएपछि तोकिए बमोजिमको दस्तूर दाखिला गरी श्रावण महिनाभित्र नवीकरण गराउनुपर्नेछ ।

तर कुनै इजाजतपत्रवालाले चाहेमा तीन आर्थिक वर्षका लागि एकैपटक नवीकरण दस्तूर दाखिला गरी नवीकरण गराउन सक्नेछ ।

(६) उपदफा (५) बमोजिमको अवधिभित्र इजाजतपत्र नवीकरण नगराउने इजाजतपत्रवालाले त्यस्तो अवधि नाघेको पहिलो तीन महिनाभित्र नवीकरण गराउनेले नवीकरण दस्तूरको पच्चीस प्रतिशत, त्यसपछिको तीन महिनाभित्र नवीकरण गराउनेले पचास प्रतिशत, त्यसपछिको तीन महिनाभित्र नवीकरण गराउनेले पचहत्तर प्रतिशत र त्यसपछि असार मसान्तसम्मको अवधिको लागि शतप्रतिशत जरिवाना बुझाउनु पर्नेछ ।

(७) उपनियम (६) मा तोकिएको अवधि समाप्त भएपछि नवीकरण गराउन चाहेमा तोकिए बमोजिमको नवीकरण वापत लाग्ने दस्तूरमा प्रत्येक आर्थिक वर्षको लागि शत प्रतिशत थप इजाजत दस्तूर र वक्यौता रकम समेत बुझाई इजाजतपत्र नवीकरण गराउन सक्नेछ ।

(८) कुनै व्यक्तिले उपदफा (१) बमोजिमको इजाजतपत्र नलिई कारोबार गरेकोमा इजाजतपत्र वापत र सोको नवीकरण वापत लाग्ने दस्तूरबाट उन्मूक्ति पाउने छैन ।"

♣१०. **इजाजतपत्र रद्द गर्न सक्ने :** विभागले देहायको अवस्थामा इजाजतपत्र रद्द गर्न सक्नेछ :-

(क) इजाजतपत्रमा तोकिएको शर्त तथा बन्देज उल्लंघन भएको पाइएमा,

(ख सार्वजनिक हित विपरीत हुने देखिएमा,

(ग) बुझाउनुपर्ने अन्तःशुल्क नबुझाएमा ।

™१०क. **अन्तःशुल्क विवरण दिनुपर्नेः** दफा ३क. बमोजिम अन्तःशुल्क निर्धारण र असुल गर्नुपर्ने दायित्व भएका व्यक्तिले प्रत्येक महिनाको अन्तःशुल्क लाग्ने कारोबारको विवरण सो महिना समाप्त भएको पच्चीस

---

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।
™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

दिनभित्र अन्तःशुल्क अधिकृत समक्ष वा हुलाकबाट रजिष्ट्री गरी तोकिए बमोजिमको अन्तःशुल्क विवरण पेश गर्नुपर्नेछ । त्यस्तो विवरण सो महिनामा अन्तःशुल्क लाग्ने कारोबार गरेको वा नगरेको जे सुकै भए तापनि पेश गर्नुपर्नेछ ।

™१०ख. **लेखा राख्नु पर्नेः** (१) दफा १०क. बमोजिम अन्तःशुल्क विवरण पेश गर्नुपर्ने व्यक्तिले अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको उत्पादन, बिक्री, त्यस्तो वस्तु वा सेवाको उत्पादनका लागि प्रयोग हुने कच्चा पदार्थ, सहायक कच्चा पदार्थ आदिको खरिद, खपत तथा अन्तिम मौज्दातको मूल्य तथा परिमाण खुल्ने तोकिए बमोजिमका विवरण सहितका लेखा अद्यावधिक राख्नुपर्नेछ र त्यस्तो लेखा अन्तःशुल्क अधिकृतले निरीक्षण गर्न माग गरेका बखत उपलब्ध गराउनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिमका खरिद, उत्पादन, निष्कासन, बिक्री र मौज्दात खाता सम्बन्धित अन्तःशुल्क अधिकृतद्वारा प्रमाणित गराई लेखा राख्ने प्रयोजनका लागि प्रयोग गर्नुपर्नेछ ।

(३) इजाजतपत्रवालाले कारोबारको लेखा छ वर्षसम्म सुरक्षित राख्नुपर्नेछ ।

(४) यस ऐनको कार्यान्वयनको निमित्त अन्तःशुल्क अधिकृतले लिखित रुपमा सूचना दिई अन्तःशुल्क लाग्ने वस्तु तथा सेवाको कारोबारको सम्बन्धमा जानकारी माग गर्न सक्नेछ ।

™१०ग. **कम्प्युटरबाट प्रशोधित अभिलेख प्रमाणको रुपमा ग्राह्य हुने** : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि अन्तःशुल्कको प्रयोजनका निमित्त अन्यथा प्रमाणित भएकोमा बाहेक विभाग वा सो अन्तर्गतका कार्यालय वा अन्तःशुल्क प्रशासन गर्न तोकिएका कार्यालयमा रहेका कम्प्युटरबाट प्रशोधित कुनै व्यक्तिको अन्तःशुल्क सम्बन्धी अभिलेख प्रमाणको रुपमा ग्राह्य हुनेछ ।

(२) तोकिएका अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको उत्पादन सम्बन्धी तथ्यांक विद्युतीय माध्यमबाट विभाग वा सो विभागले तोकेको कार्यालयमा स्वतः प्राप्त हुने गरी व्यवस्था गर्न विभागले तोक्न सक्नेछ ।

(३) विभागले विद्युतीय माध्यमबाट अन्तःशुल्क विवरण पेश गर्ने र अन्तःशुल्क भुक्तानी गर्ने सम्बन्धमा आवश्यक व्यवस्था गर्न सक्नेछ ।

™१०घ. **अन्तःशुल्क अधिकृतले अन्तःशुल्क निर्धारण गर्न सक्नेः** (१) देहायका कुनै अवस्थामा अन्तःशुल्क अधिकृतले अन्तःशुल्क निर्धारण गर्न सक्नेछ :–

(क) म्यादभित्र अन्तःशुल्क विवरण पेश नगरेमा,

(ख) अधुरो वा त्रुटीपूर्ण अन्तःशुल्क विवरण पेश गरेमा,

(ग) झुट्टा अन्तःशुल्क विवरण पेश गरेमा,

---

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(घ) अन्तःशुल्कको रकम कम देखाएको वा ठीक नभएको भन्ने अन्तःशुल्क अधिकृतलाई विश्वास गर्नुपर्ने आधार भएमा,

(ङ) बिक्री मूल्यमा न्यून बिजकीकरण गरेको भन्ने अन्तःशुल्क अधिकृतलाई विश्वास गर्नुपर्ने आधार र कारण भै दफा ७ को उपदफा (४) बमोजिम पुनः मूल्य निर्धारण वा अतिरिक्त मूल्य निर्धारण गर्नुपर्ने भएमा,

(च) यस ऐन वा यस ऐन अन्तर्गत अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको उत्पादन प्रतिलब्धी तोकिएकोमा सो अनुसारको उत्पादन प्रतिलब्धी नपुगेमा,

(छ) निष्कासन गरेको मदिरा र चुलाईमा जाने पदार्थको अल्कोहलको मात्रा एक प्रतिशत भन्दा बढी फरक परेमा,

(ज) अन्तःशुल्क छलेमा,

(झ) इजातजपत्र नलिई कुनै व्यक्तिले अन्तःशुल्क लाग्ने वस्तुको कारोबार गरेमा ।

तर खण्ड (ग) र (ज) को अवस्थामा बाहेक अन्तःशुल्क विवरण दाखिला गरेको मितिले चार वर्षभित्र अन्तःशुल्क निर्धारण गरीसक्नुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम अन्तःशुल्क निर्धारण गर्दा अन्तःशुल्क अधिकृतले सम्बन्धित व्यक्तिलाई आफ्नो सफाई पेश गर्न पन्ध्र दिनको म्याद दिनुपर्नेछ ।

(३) उपदफा (१) बमोजिम गरिएको अन्तःशुल्क निर्धारणको सम्बन्धमा विभागले अनुगमन गर्न सक्नेछ । अनुगमन गर्दा कुनै त्रुटी देखिएमा विभागले पुनः अन्तःशुल्क निर्धारण गर्न आदेश दिन सक्नेछ ।

(४) उपदफा (१) बमोजिम अन्तःशुल्क निर्धारण गर्ने वा दफा १०क. बमोजिम पेश गरेको अन्तःशुल्क विवरण जाँच गर्ने प्रयोजनका लागि अन्तःशुल्क अधिकृतलाई देहाय बमोजिमको अधिकार हुनेछ :–

(क) अन्तःशुल्क दायित्वसँग सम्बन्धित वस्तुहरू, स्थान, कागजात, लेखा तथा अभिलेख जाँच गर्ने,

(ख) कुनै व्यक्तिको कारोबार स्थल वा यस ऐन अन्तर्गत कसूर मानिने कार्यसित सम्बन्धित प्रमाणहरू हुनसक्ने सम्भावना भएका अन्य स्थलहरूमा खानतलासी लिने,

(ग) आफ्नो कर्तव्यपालनको सिलसिलामा कुनै अभिलेख, किताब, खाता कागजातहरू तयार गर्ने वा तिनीहरूमा विवरण भर्ने व्यक्तिसँग जानकारी माग गर्ने,

(घ) अन्तःशुल्क लाग्ने वस्तु तथा सेवाको कारोबारस्थल वा सोसँग सम्बन्धित अन्य स्थलमा रहेको कुनै कागजात, किताब तथा अभिलेखलाई कब्जा गर्ने वा अन्यत्र लैजाने,

(ङ) कारोबार सञ्चालन गर्ने स्थान वा कार्यालय वा अन्य कुनै उपयुक्त स्थानमा अन्तःशुल्कको लेखापरीक्षण गर्ने,

(च) अन्तःशुल्क अधिकृतले बैंक तथा वित्तिय संस्था लगायत कुनै व्यक्तिसँग अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको कारोबारको सम्बन्धमा कुनै कुराको जानकारी माग गर्ने ।

(५) अन्तःशुल्क अधिकृतले यस दफा बमोजिम माग गरेको सूचना दिनु त्यस्तो बैंक, वित्तीय संस्था वा व्यक्तिको कर्तव्य हुनेछ ।

™१०ङ. **विशेषज्ञको सेवा लिन सक्ने** : विभागले यस ऐनको प्रभावकारी कार्यान्वयनका लागि आवश्यकतानुसार मदिरा विशेषज्ञ, ब्रुइङ्ग विशेषज्ञ, रसायन विज्ञ लगायतका अन्य विशेषज्ञहरूको सेवा लिन सक्नेछ ।

™१०च. **अन्तःशुल्क लाग्ने वस्तु तथा सेवाको उत्पादन प्रतिलब्धी तोक्न सक्ने** : (१) एनहाइड्रस इथानोल, रेक्टिफाइड स्प्रिट वा इ.एन.ए. उत्पादन गर्ने उद्योगले प्रयोग गर्ने अन्न, मोलासिस वा खुदोबाट प्राप्त हुनु पर्ने इथानोल, स्प्रिट वा इ.एन.ए.को उत्पादन प्रतिलब्धी दरको निर्धारण तोकिए बमोजिम हुनेछ ।

(२) उपदफा (१) बमोजिम तोकिएको प्रतिलब्धी दर भन्दा घटी उत्पादन भएको देखिएमा त्यस्तो फरक परिमाणको इथानोल, स्प्रिट वा इ.एन.ए. बाट सो प्रतिष्ठानले उत्पादन गर्ने उच्चतम् कोटीको मदिरा उत्पादन भएको मानिनेछ ।

(३) विभागले अन्तःशुल्क लाग्ने अन्य वस्तु तथा सेवाको उत्पादन प्रतिलब्धी दर तोक्न सक्नेछ ।

™१०छ. **अल्कोहलको मात्रा जाँच गर्ने** : स्वीकृति लिई निष्कासन गरेको मदिरा र चुलाईमा जाने पदार्थको अल्कोहलको मात्रा र गुणस्तरको परीक्षण अन्तःशुल्क अधिकृतले जुनसुकै बखत गर्न सक्नेछ । अल्कोहलको मात्रा एक प्रतिशत भन्दा बढी फरक वा गुणस्तरमा उल्लेखनीय रुपबाट फरक पार्न पाइनेछैन ।

™१०ज. **वक्यौता अन्तःशुल्कको असुली** : यस ऐन बमोजिमको म्यादभित्र बुझाउनु पर्ने अन्तःशुल्क कुनै व्यक्तिले नबुझाएमा सम्बन्धित अन्तःशुल्क अधिकृतले देहायका कुनै वा सबै तरिका अपनाई असुल गर्न सक्नेछ :-

(क) त्यस्तो व्यक्तिलाई फिर्ता गर्नुपर्ने कुनै रकम भए त्यसमा कट्टा गरेर,

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

(ख) नेपाल सरकार वा नेपाल सरकारको स्वामित्वमा भएको कुनै संगठित संस्था वा स्थानीय निकायहरूबाट त्यस्तो व्यक्तिले पाउने रकमबाट कट्टा गर्न लगाएर,

(ग) त्यस्तो व्यक्तिको बैंक, वित्तीय वा अन्य संस्थामा रहेको हीतबाट कट्टा गर्न लगाएर,

**स्पष्टीकरण:** यस खण्डको प्रयोजनको लागि "हीत" भन्नाले बैंक, वित्तीय वा अन्य संस्थामा रहेको निक्षेप तथा लगानीलाई समेत सम्झनु पर्छ ।

(घ) त्यस्तो व्यक्तिको बिक्री, निकासी, पैठारी र अन्य व्यवसाय रोक्का गरेर,

(ङ) त्यस्तो व्यक्तिको चल तथा अचल सम्पत्ति कब्जा गरेर,

(च) त्यस्तो व्यक्तिको चल तथा अचल सम्पत्ति सम्पूर्ण वा केही एकै पटक वा पटक पटक गरी तोकिए बमोजिम लिलाम बिक्री गरेर ।"

™१०झ. **विलम्ब शुल्क :** दफा ४ को उपदफा (१) को खण्ड (क) को अवस्था वाहेक अन्तःशुल्क निर्धारण भएको वा अन्य कुनै कारणले यस ऐन बमोजिम म्यादभित्र बुझाउनु पर्ने अन्तःशुल्क रकम कुनै व्यक्तिले नबुझाएमा बाँकी रहेको अन्तःशुल्क रकममा प्रति दिन शून्य दशमलव शून्य पाँच प्रतिशतका दरले विलम्ब शुल्क लाग्नेछ ।

११. **यथेष्ट आधार देखिएमा तलासी लिने** : अन्तःशुल्क लाग्ने वस्तु अन्तःशुल्क छली प्रतिष्ठानबाट ♣निस्काशन गरी वा विदेशबाट पैठारी गरी लिई जान लागेको छ भन्ने मनासिब माफिकको शंका लागेमा अन्तःशुल्क अधिकृत वा निजले खटाएको कर्मचारीले जुनसुकै व्यक्ति वा सवारी साधनलाई रोक्का गर्न र अन्तःशुल्क तिरेको प्रमाण माग गर्न सक्नेछ । अन्तःशुल्क महसूल तिरेको प्रमाण पेश गर्न नसकेमा अन्तःशुल्क छलेको मानिनेछ ।

१२. **खानतलासी, कब्जा वा गिरफतार गर्न सकिने** : (१) कुनै व्यक्ति, फर्म, कम्पनी वा संस्थाले इजाजतपत्र नलिई अन्तःशुल्क लाग्ने वस्तु वा उत्पादन, पैठारी, बिक्री वा संचय गरी वा अन्तःशुल्क लाग्ने सेवा प्रदान गरी व्यवसाय संचालन गरेमा वा दफा ११ बमोजिम अन्तःशुल्क छलेको भन्ने कुराको जानकारी अन्तःशुल्क अधिकृत वा निजले खटाएका कर्मचारीले पाएमा त्यस्ता अधिकृत वा कर्मचारीले त्यस्तो कार्य भैरहेको प्रतिष्ठान, घर, जग्गा, सवारी साधन वा स्थानको खानतलासी लिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम खानतलासी लिँदा यस ऐन विपरित अन्तःशुल्क लाग्ने वस्तुको उत्पादन, बिक्री, पैठारी, संचय वा ओसार पसार गर्ने कार्य वा अन्तःशुल्क लाग्ने सेवा

---

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।

प्रदान गरी व्यवसाय संचालन गर्ने काम गरेको पाइएमा त्यस्तो काममा सरीक भएको व्यक्तिलाई खानतलासी लिने अधिकृत वा कर्मचारीले पुर्जी दिई गिरफतार गरी त्यहाँ प्राप्त वस्तुको मुचुल्का खडा गरी कब्जामा लिनु पर्नेछ ।

(३) यस ऐन अन्तर्गतको कुनै कसूर कुनै प्रतिष्ठान, घर, जग्गा, सवारी साधन वा स्थानमा भैरहेको छ र तुरुन्तै केही कारबाही नगरेमा अभियुक्त भागी जाने वा कसूरको सबूत प्रमाण गायब हुने सम्भावना देखेमा अन्तःशुल्क अधिकृत वा निजले खटाएको कर्मचारीले सो कुराको पर्चा खडा गरी आफैंले वा आफनो मातहतका कर्मचारीद्वारा जुनसुकै बखत देहायका कामहरु गर्न गराउन सक्नेछ :-

(क) त्यस्तो प्रतिष्ठान, घर, जग्गा, सवारी साधन वा स्थानमा प्रवेश गर्न,

(ख) त्यसरी प्रवेश गर्दा बाधा बिरोध भएमा त्यस स्थानमा रहेबसेका मानिसलाई त्यहाँबाट हट्न मनासिब माफिकको मौका दिई झ्याल ढोका फोरी प्रवेश गर्न,

(ग) कसूरसित सम्बन्धित अन्तःशुल्क लाग्ने वस्तु र सो बमोजिमको कसूर प्रमाणित गर्न सहायक हुने अन्य वस्तु र कागजात कब्जा गर्न,

(घ) इजाजतपत्र निलम्बन गर्न, र

™तर त्यस्तो निलम्वन सात दिन भन्दा बढीको अवधिको लागि गर्न पाइने छैन र त्यसरी निलम्बन गरेको साठी दिनभित्र निर्णय गरी सक्नु पर्नेछ ।

(ङ) कसूर गरेको भनी शंका लागेको व्यक्तिलाई गिरफतार गर्न ।

(४) यस दफा बमोजिम कुनै प्रतिष्ठान, घर, जग्गा, सवारी साधन वा स्थानमा प्रवेश गर्दा वा खानतलासी लिँदा सम्भव भएसम्म सम्बन्धित महानगरपालिका, उपमहानगरपालिका, नगरपालिका वा गाउँ विकास समितिका एकजना सदस्य वा त्यस ठाउँका एकजना स्थानीय व्यक्तिलाई साक्षी राख्नु पर्नेछ ।

(५) यस ऐन बमोजिम कसैलाई गिरफतार गरेकोमा वा कुनै व्यक्ति, प्रतिष्ठान, घर, जग्गा, सवारी साधन वा स्थानको खानतलासी गरेकोमा वा अन्तःशुल्क लाग्ने वस्तु वा अन्य वस्तु कव्जा गरेकोमा त्यसरी खानतलासी वा गिरफतार गर्ने अन्तःशुल्क अधिकृतले त्यसको प्रतिवेदन विभागको महानिर्देशक समक्ष सो गिरफतार, खानतलासी वा वस्तु कव्जा गरेको मितिले चौबीस घण्टाभित्र छिटो साधनद्वारा पठाउनु पर्नेछ । अन्तःशुल्क अधिकृत बाहेक निजको मातहतका अन्य

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

कर्मचारीले त्यस्तो काम गरेमा निजले त्यसको प्रतिवेदन त्यस्तो काम गरेको मितिले चौबीस घण्टाभित्र अन्तःशुल्क अधिकृत वा विभाग समक्ष पठाउनु पर्नेछ ।

(६) यस ऐन बमोजिम कसूरको तहकिकातको सम्बन्धमा अन्तःशुल्क अधिकृतलाई प्रचलित कानून बमोजिम प्रहरीलाई भए सरहको अधिकार हुनेछ ।

(७) खानतलासी, गिरफतार वा कब्जा गर्ने काममा अन्तःशुल्क अधिकृतले सहयोगको निमित्त स्थानीय प्रशासन वा प्रहरीसंग अनुरोध गरेमा स्थानीय प्रशासन वा प्रहरीले तत्काल सहायता प्रदान गर्नु पर्नेछ ।

१३. **कसूरको सूचना दिनु पर्ने :** (१) कसैले यस ऐन विपरित कुनै काम हुन लागेको, भैरहेको वा भैसकेको कुरा थाहा पाएमा ♣आन्तरिक राजश्व कार्यालयमा वा नजिकमा ♣आन्तरिक राजश्व कार्यालय नभए प्रहरी कार्यालय वा अन्य कुनै सरकारी कार्यालयमा सो कुराको सूचना दिनु निजको कर्तव्य हुनेछ । सूचना दिने व्यक्तिले त्यस्तो सूचना लिखित वा मौखिक रुपमा दिन सक्नेछ । त्यसरी सूचना प्राप्त गर्ने कार्यालयले तुरुन्त त्यस्तो सूचना सम्बन्धित अन्तःशुल्क कार्यालयमा पठाउनु पर्नेछ ।

(२) सूचना दिने व्यक्तिले आफनो नाम गोप्य राख्न चाहेमा सांकेतिक भाषामा आफनो परिचय दिन सक्नेछ ।

(३) सूचना दिँदा सूचना दिने व्यक्तिले आफूले थाहा पाएको स्रोत खुलाउन बाध्य हुने छैन ।

™(४) विभागले यस दफा बमोजिमको कसूरको सूचना दिने सुराकीलाई सूचनाको सत्यताको आधारमा विभागले तोके बमोजिम बढीमा दश हजार रुपैयासम्म सुराकी प्रोत्साहन खर्च दिन सक्नेछ ।

™(५) यस दफा बमोजिम कसूरको सूचना दिने व्यक्तिको विवरण गोप्य रहनेछ ।"

१४. **पुरस्कार** :(१) यस ऐन विपरित कुनै काम हुन लागेको, भैरहेको वा भैसकेको कुराको सूचना वा सुराक दिने सरकारी कर्मचारी वा अन्य कुनै व्यक्तिलाई अभियुक्तबाट बरामद भएको अन्तःशुल्क लाग्ने वस्तुबाट असूल भएको बिगोको देहाय बमोजिम हुने रकम मुद्दाको अन्तिम निर्णय भएपछि सम्बन्धित ♣आन्तरिक राजश्व कार्यालयबाट पुरस्कार स्वरुप प्रदान गरिनेछ :-

---

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।
™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

♣(क) सुराक दिने व्यक्तिलाई बिगोको दश प्रतिशत,

♣(ख) वस्तु मात्र पक्री पेश गर्ने व्यक्तिलाई बिगोको बीस प्रतिशत ।

♣(ग) दशी तथा मानिस सहित पक्री पेश गर्ने व्यक्तिलाई बिगोको तीस प्रतिशत,

तर सूचना वा सुराक दिने व्यक्ति एकभन्दा बढी भएमा त्यस्ता व्यक्तिहरू बीच पुरस्कारको बाँडफाँड दामासाहीले गरिनेछ ।

(२) कुनै कर्मचारी वा प्रहरीले सुराक पाई बरामद गरेको वस्तु व्यक्ति सहित पक्राउ गरेमा त्यस्तो कर्मचारी वा प्रहरीलाई बिगोको पच्चीस प्रतिशत दिइनेछ ।

तर वस्तु मात्र पक्रिएमा पक्रिएको वस्तुको मूल्यको पच्चीस प्रतिशत मात्र पुरस्कार स्वरुप प्रदान गरिनेछ । त्यसरी पुरस्कार दिँदा एक पटकमा प्रति व्यक्ति पन्ध्र हजार रुपैयाँ भन्दा बढी भएमा सो अङ्कमा नबढ्ने गरी दिइनेछ ।

१५. **सूचना वा मद्दत नदिने व्यक्तिलाई दण्ड सजाय** : यस ऐन विपरित कार्य हुन लागेको भैरहेको वा भैसकेको कुरा थाहा पाएपछि सो कुराको सूचना दिनु पर्ने वा ♣आन्तरिक राजश्व कार्यालयले मागेको बखत मद्दत दिनु पर्ने कर्तव्य भएको कुनै व्यक्तिले जानी जानी त्यस्तो सूचना वा मद्दत नदिएमा निजलाई कसूरको प्रकृति हेरी तीन महिनासम्म कैद वा दश हजार रुपैयाँसम्म जरिबाना वा दुबै सजाय हुनेछ ।

१६. **दण्ड** : (१) कसैले देहायका कसूर गरेमा त्यस्ता व्यक्तिलाई त्यस्तो कसूरको निमित्त बिगो जफत गरी बिगो बमोजिम जरिबाना वा एक वर्षसम्म कैद वा दुबै सजाय हुनेछ ।

(क) यस ऐन बमोजिम तिर्नु पर्ने अन्तःशुल्क दबाएमा, छिपाएमा वा छलेमा,

♣(ख) इजाजतपत्र नलिई अन्तःशुल्क लाग्ने वस्तु उत्पादन वा पैठारी गरेमा,

(ग) कुनै व्यक्तिले झुट्ठा लेखा वा किर्ते कागज तयार गरी यस ऐन विपरित कुनै कसूर गरेमा ।

(२) खण्ड (क), (ख) वा (ग) मा लेखिएको कसूर गर्न प्रयत्न वा दुरुत्साहन गरेमा आधा सजाय हुनेछ ।

(३) कसूरसंग प्रत्यक्ष वा परोक्ष रुपमा प्रयोग हुन आएको भाडा बर्तन, वस्तु वा सेवा उत्पादन गर्न प्रयोग गरिएको ज्यावल, मेशिन, उपकरण र सवारी साधन समेत जफत हुनेछ ।

---

♣ आर्थिक ऐन, २०६६ द्वारा संशोधन ।

तर त्यस्तो कसूर गर्ने व्यक्तिले भाडाको सवारी साधन प्रयोग गरेको र सवारी धनीको अनुमति बिना सवारी साधन त्यस्तो काममा प्रयोग गरेको भएमा त्यस्तो सवारी साधन जफत नगरी सवारी धनीलाई पच्चीस हजार रुपैयाँ जरिबाना र सवारी चालकलाई कसूरको प्रकृति हेरी तीन महिनासम्म कैद वा पन्ध्र हजार रुपैयासम्म जरिबाना वा दुबै सजाय हुनेछ ।

(४) उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भए तापनि भाडाको सवारीमा दर्ता गरी सवारी साधनको मालिकले नै प्रयोग गरेको पाइएमा त्यस्तो सवारी जफत हुनेछ ।

™(५) कुनै व्यक्तिले देहायको कुनै कसूर गरेमा अन्तःशुल्क अधिकृतले देहाय बमोजिम जरिवाना गर्न सक्नेछ :-

(क) दफा ७ को उपदफा (४) बमोजिम पुनः मूल्य निर्धारण वा अतिरिक्त मूल्य निर्धारण भएमा थप हुने अन्तःशुल्क रकमको शत प्रतिशत रकम,

(ख) इजाजतपत्र नलिई अन्तःशुल्क लाग्ने वस्तु वा सेवा बिक्री वा संचय गरेमा पाँच हजार रुपैयादेखि पन्ध्र हजार रुपैयासम्म,

(ग) दफा १०क. को व्यवस्था उल्लंघन गरेमा लाग्ने अन्तःशुल्कको प्रतिदिन शून्य दशमलब शून्य पाँच प्रतिशत वा प्रति विवरण एक हजार रुपैया मध्ये जुन बढी हुन्छ सो रकम,

(घ) दफा १०ख. को उपदफा (१) बमोजिमको लेखा अद्यावधिक नराखेमा दश हजार रुपैयाँ र कारोबारको लेखा निरीक्षण गर्न नदिएमा पटकै पिच्छे पाँच हजार रुपैयाँ,

(ङ) दफा १०ख. को उपदफा (२) उल्लंघन गरेमा पाँच हजार रुपैयाँसम्म,

(च) दफा १०ख. को उपदफा (३) उल्लंघन गरेमा दश हजार रुपैयाँ,

(छ) दफा १०घ. को उपदफा (३) बमोजिमको कार्यमा वाधा विरोध गरेमा पटकै पिच्छे पाँच हजार रुपैयाँ,

(ज) दफा १०छ. बमोजिम जाँच गर्दा अल्कोहलको मात्रा एक प्रतिशत भन्दा बढी फरक भएमा राजस्व चुहावट भएको रकमको शतप्रतिशत रकम,

(झ) अन्तःशुल्क लाग्ने वस्तु वा सेवाको उत्पादन प्रतिलब्धी तोकिएकोमा सो अनुसारको उत्पादन प्रतिलब्धी नपुगेमा थप हुने अन्तःशुल्क रकमको शत प्रतिशत रकम,

---

™ आर्थिक ऐन, २०६६ द्वारा थप ।

